# स्थानीय प्रशासन ऐन, २०२८

लालमोहर र प्रकाशन मिति

२०२८।४।२०

संशोधन गर्ने ऐन

| | | |
|---|---|---|
| १. न्याय प्रशासन सुधार ऐन, २०३१ | २०३१।४।१८ | |
| २. कालो बजार तथा केही अन्य सामाजिक अपराध र सजाय ऐन, २०३२ | २०३२।५।२० | |
| ३. स्थानीय प्रशासन (पहिलो संशोधन) ऐन, २०३३ | २०३३।४।२८ | |
| ४. स्थानीय प्रशासन (दोस्रो संशोधन) ऐन, २०३७ | २०३७।६।२ | |
| ५. वाक् तथा प्रकाशन स्वतन्त्रता ऐन, २०३७ | २०३७।४।२९ | |
| ६. केही नेपाल ऐन (संशोधन) ऐन, २०४१ | २०४१।७।२७ | |
| ७. न्याय प्रशासन सुधार (चौथो संशोधन) ऐन, २०४३ | २०४३।७।२४ | |
| ८. केही नेपाल ऐन (संशोधन) ऐन, २०४३ | २०४३।७।२४ | |
| ९. न्याय प्रशासन ऐन, २०४८ | २०४८।२।१६ | |
| १०. स्थानीय प्रशासन (तेस्रो संशोधन) ऐन, २०४८ | २०४८।२।२१ | |
| ११. स्थानीय प्रशासन (चौथो संशोधन) ऐन, २०५८ | २०५८।५।६ | |
| १२. स्थानीय प्रशासन (पाँचौं संशोधन) अध्यादेश, २०६२ | २०६२।६।७ | २०६२।१२।६ |
| | प्रमाणिकरण र प्रकाशन मिति | |
| १३. केही नेपाल ऐनको व्यवस्था जगाउने ऐन, २०६३ | २०६३।४।२३ | |
| १४. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ | २०६३।६।२८ | |
| १५. केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ | २०६४।५।९ | |
| १६. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ | | |

## २०२८ सालको ऐन नं. २

## **स्थानीय प्रशासन सम्बन्धी कानूनलाई संशोधन र एकीकरण गर्न बनेको ऐन**

**प्रस्तावना** : स्थानीय प्रशासन सम्बन्धी कानूनलाई विकेन्द्रित प्रशासन व्यवस्था अनुरूप संशोधन र एकीकरण गर्न +तथा शान्ति र व्यवस्था कायम राख्न वान्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेकोछ छ।

+ दोस्रो संशोधनद्वारा थप ।

## परिच्छेद- १

## प्रारम्भिक

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम "स्थानीय प्रशासन ऐन, २०२८" रहेको छ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन तुरून्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,

(क) ⊠... ... ... ... ... ... ... ...

☑(क१) "क्षेत्रीय प्रशासक" भन्नाले दफा ४क. को उपदफा २ बमोजिम नियुक्त क्षेत्रीय प्रशासक सम्झनु पर्छ ।

(ख) "प्रमुख जिल्ला अधिकारी" भन्नाले नेपाल सरकारबाट नियुक्त प्रमुख जिल्ला अधिकारी सम्झनु पर्दछ ।

✝(ग) "सभा" भन्नाले पच्चीस वा पच्चीस भन्दा बढी व्यक्तिहरू कुनै सार्वजनिक स्थलमा कुनै खास उद्देश्य पूरा गर्न संगठित वा असंगठित रूपमा जम्मा भएको समूह सम्झनु पर्छ ।

## ❷परिच्छेद - २

## विकासक्षेत्र, अञ्चल र जिल्ला विभाजन

३. **विकासक्षेत्र, अञ्चल तथा जिल्ला विभाजन** : (१) नेपाललाई अनुसूचीमा उल्लेख भए बमोजिम विकास क्षेत्र, अञ्चल तथा जिल्लाहरूमा विभाजन गरिएकोछ ।

(२) प्रत्येक विकास क्षेत्र, अञ्चल तथा जिल्लाको सीमाना र सदरमुकाम नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिए बमोजिम हुनेछ ।

(३) यस अघि कायम भैरहेको जिल्लाको सिमाना र सदरमुकाम नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी अन्यथा व्यवस्था नगरेसम्म साविकै बमोजिम कायम रहनेछ ।

---

⊠ तेस्रो संशोधनद्वारा झिकिएको ।
☑ चौथो संशोधनद्वारा थप ।
✝ केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।
❷ चौथो संशोधनद्वारा संशोधित ।

## परिच्छेद – ३

## [❷]क्षेत्रीय र जिल्ला प्रशासन

[⊗]४. .... ... ... ... ... ...

[☑]**४क. क्षेत्रीय प्रशासन** : (१) प्रत्येक विकासक्षेत्रमा देहाय बमोजिम एउटा क्षेत्रीय प्रशासन कार्यालय रहनेछ :-

(क) क्षेत्रीय प्रशासन कार्यालय, पूर्वाञ्चल विकासक्षेत्र, धनकुटा ।

(ख) क्षेत्रीय प्रशासन कार्यालय, मध्यमाञ्चल विकासक्षेत्र, हेटौंडा ।

(ग) क्षेत्रीय प्रशासन कार्यालय, पश्चिमाञ्चल विकासक्षेत्र, पोखरा ।

(घ) क्षेत्रीय प्रशासन कार्यालय, मध्यपश्चिमाञ्चल विकासक्षेत्र, सुर्खेत ।

(ङ) क्षेत्रीय प्रशासन कार्यालय सुदूरपश्चिमाञ्चल विकासक्षेत्र, दिपायल ।

(२) उपदफा (१) बमोजिम क्षेत्रीय प्रशासन कार्यालयको प्रमुख प्रशासकीय अधिकारीको रूपमा नेपाल सरकारले निजामती सेवाको राजपत्राङ्कित विशिष्ट श्रेणीको एकजना क्षेत्रीय प्रशासक नियुक्ति गर्नेछ ।

[☑]**४ख. <u>क्षेत्रीय प्रशासकको काम, कर्तव्य र अधिकार</u>** : (१) नेपाल सरकारको नीति र निर्देशन अनुरूप समन्वयात्मक तरिकाले आफ्नो क्षेत्रभित्र सामान्य प्रशासन सञ्चालन गर्ने गराउने क्षेत्रीय प्रशासकको उत्तरदायित्व हुनेछ ।

(२) क्षेत्रीय प्रशासकको अन्य काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) आफ्नो क्षेत्रभित्र शान्ति सुरक्षा र सुव्यवस्था कायम राख्ने, राख्न लगाउने,

(ख) आफ्नो क्षेत्रभित्रको जिल्ला प्रशासन कार्यालयहरूको कार्य सञ्चालनमा रेखदेख र समन्वय गर्ने,

(ग) आफ्नो क्षेत्रभित्रको क्षेत्रीय तथा जिल्ला कार्यालयहरूको कामलाई सेवामुखी र मितव्ययी बनाउन तथा ढिलासुस्ती, लापरवाही, भ्रष्टाचार आदि हुन नदिन आवश्यक कारबाही गर्ने, गराउने,

---

[❷] चौथो संशोधनद्वारा संशोधित ।

[⊗] तेस्रो संशोधनद्वारा खारेज ।

[☑] चौथो संशोधनद्वारा थप ।

(घ) अन्य कानूनमा व्यवस्था भएकोमा सोही बमोजिम हुने गरी सो बाहेक आफ्नो क्षेत्रभित्रको सरकारी तथा सार्वजनिक सम्पत्तिको संरक्षण, रेखदेख तथा मर्मत, सम्भार गर्ने, गराउने,

(ङ) आफ्नो क्षेत्रभित्रको शान्ति सुरक्षा सम्बन्धी वस्तुस्थितिको यथार्थ जानकारी नियमित रूपमा नेपाल सरकारलाई उपलब्ध गराउने,

(च) सम्बन्धित प्रमुख जिल्ला अधिकारीबाट आफ्नो क्षेत्रभित्र जोडिएको विदेशी मुलुकको सिमानाको आवधिक निरीक्षण गर्न लगाई नेपाल सरकार समक्ष प्रतिवेदन पेश गर्ने र सीमावर्ती क्षेत्रमा हुने आपराधिक क्रियाकलापहरूको नियन्त्रणमा स्थानीय प्रशासनको प्रभावकारिता बढाउन आवश्यक व्यवस्था मिलाउने,

(छ) आफ्नो क्षेत्रभित्रका दुई वा दुईभन्दा बढी जिल्लाहरू बीच कायम रहेको सिमाना, बाटो, कुलो, पैनी, खानेपानी आदि सार्वजनिक सरोकारको विषयमा आपसी मतभेद वा विवाद उत्पन्न भएमा सम्बन्धित पक्षहरू राखी निराकरणको लागि आवश्यक व्यवस्था गर्ने,

(ज) दैवीप्रकोप, महामारी, भोकमरी जस्ता विषम परिस्थिति नियन्त्रण एवं व्यवस्थापन गर्न आवश्यक व्यवस्था गर्ने, गराउने,

(झ) आफ्नो क्षेत्रभित्रका कारागारहरूको नियमित निरीक्षण गरी सुसञ्चालनको आवश्यक व्यवस्था मिलाउने र कैदीहरूको कैद माफीको लागि सिफारिस गर्ने,

(ञ) विकास क्षेत्रभित्र राष्ट्रियता अभिवृद्धि गरी नेपाली जनताबीच मेलमिलाप र आपसी सद्भावद्वारा एकता कायम गर्न आवश्यक पर्ने कार्यहरू गर्ने,

(ट) नेपाल सरकारले समय समयमा दिएका आदेश तथा निर्देशन अनुसार अन्य काम कारबाही गर्ने, गराउने तथा त्यसको अनुगमन गर्ने ।

☑**४ग. <u>क्षेत्रीय सुरक्षा समिति</u>** : (१) प्रत्येक क्षेत्रमा शान्ति सुरक्षा र सुव्यवस्था कायम गर्ने काममा सहयोग पुऱ्याउन देहाय बमोजिमको एक क्षेत्रीय सुरक्षा समिति रहनेछ :-

(क) क्षेत्रीय प्रशासक - अध्यक्ष

(ख) नेपाली सेनाको स्थानीय प्रमुख - सदस्य

---

☑ चौथो संशोधनद्वारा थप ।

(ग) क्षेत्रीय प्रहरी कार्यालयको प्रमुख - सदस्य

(घ) सशस्त्र प्रहरी कार्यालयको स्थानीय प्रमुख - सदस्य

(ङ) राष्ट्रिय अनुसन्धान विभागको सम्बन्धित विकासक्षेत्र हेर्ने कार्यालयको प्रमुख - सदस्य-सचिव

(२) क्षेत्रीय सुरक्षा समितिको बैठकमा क्षेत्रीय प्रशासकले आवश्यकता अनुसार क्षेत्रभित्रका अन्य कार्यालयका पदाधिकारीलाई आमन्त्रण गर्न सक्नेछ ।

(३) उपदफा (१) बमोजिमको समितिको बैठक आवश्यकता अनुसार अध्यक्षले बोलाउन सक्नेछ ।

☑४घ. **क्षेत्रीय प्रशासकको नियन्त्रणमा रही काम गर्नु पर्ने**ः आफ्नो क्षेत्रमा शान्ति सुरक्षा कायम गर्ने कामको लागि क्षेत्रीय प्रहरी कार्यालयले क्षेत्रीय प्रशासकको प्रत्यक्ष नियन्त्रण र निर्देशनमा रही काम गर्नु पर्नेछ ।

**५.** **जिल्ला प्रशासन**ः ◈(१) जिल्लाको सामान्य प्रशासन सञ्चालन गर्नको लागि प्रत्येक जिल्लामा एउटा जिल्ला प्रशासन कार्यालय रहनेछ । नेपाल सरकारले सो कार्यालयको प्रमुख प्रशासकीय अधिकारीको रूपमा काम समेत गर्ने गरी प्रत्येक जिल्लामा एकजना प्रमुख जिल्ला अधिकारीको नियुक्ति गर्नेछ । प्रमुख जिल्ला अधिकारीले प्रचलित कानून, नेपाल सरकारको नीति, निर्देशन तथा क्षेत्रीय प्रशासकको रेखदेखमा रही नेपाल सरकारको प्रतिनिधिको रूपमा काम गर्नेछ ।

(२) अदालत र रक्षा सम्बन्धी कार्यालयहरू ⊠... ... ... बाहेक नेपाल सरकारले समय समयमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको जिल्ला स्तरका कार्यालयहरू जिल्ला प्रशासन कार्यालयको शाखाका रूपमा रहनेछन् ।

(३) उपदफा (२) बमोजिम जिल्ला प्रशासन कार्यालयको शाखाको रूपमा रहेको जिल्ला स्तरका कार्यालय वा सोही कार्यालयका अधिकृतले प्रयोग गर्न पाउने गरी प्रचलित नेपाल कानून बमोजिम तोकिएको अधिकार वा कुनै न्यायिक वा अर्ध न्यायिक अधिकारको प्रयोगका हकमा प्रमुख जिल्ला अधिकारीको कुनै नियन्त्रण रहने छैन ।

(४) उपदफा (२) बमोजिम जिल्ला प्रशासन कार्यालयको शाखाको रूपमा रहेका जिल्ला स्तरका कार्यालयहरू माथि रेखदेख, नियन्त्रण र निर्देशन दिने सम्बन्धमा ▲प्रमुख जिल्ला अधिकारी वा अन्य अधिकारीको अधिकार र कर्तव्य यस ऐन अन्तर्गत बनेको नियमद्वारा व्यवस्थित हुनेछ ।

---

☑ चौथो संशोधनद्वारा थप ।

◈ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा संशोधित ।

⊠ तेश्रो संशोधनद्वारा झिकिएको ।

(५) प्रमुख जिल्ला अधिकारीको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :

(क) जिल्लामा शान्ति, व्यवस्था र सुरक्षा कायम राख्ने,

■(ख) जिल्लाभित्र नेपाल सरकार, जिल्ला विकास समिति, नगरपालिका वा गाउँ विकास समितिले सञ्चालन गरेका विकास कार्यहरूमा सहयोग पुऱ्याउने,

(ग) जिल्लाभित्र रहेको नेपाल सरकारको सबै सम्पत्तिको रेखदेख, सम्भार तथा मर्मत गर्ने, गराउने,

(घ) ⊠... ... ... ... ... ... ... ... ... ... ... ... ...

(ङ) ■नेपाल सरकारले समयमा समयमा दिएका आदेश वा निर्देशन अनुसार अन्य काम कारवाही गर्ने ।

(६) ✖... ... ... ... ...

६. **शान्ति सुरक्षा कायम गर्ने** : (१) ⊠... ... प्रमुख जिल्ला अधिकारीले कुनै हिंसात्मक काम कारवाई हुने वा हुलदङ्गा हुने आशंका भएको कार्यलाई रोक्न देहाय बमोजिम गर्नु पर्दछ :

(क) कुनै सभा जुलुस वा भीडले हिंसात्मक वा ध्वंसात्मक प्रवृत्ति लिई त्यसको कुनै काम कारवाईबाट शान्ति भंग हुने संभावना देखिएमा प्रहरीद्वारा रोक्न लगाउने र प्रहरीले नियन्त्रण गर्न नसकेकोमा सम्बन्धित ठाउँमा तुरून्तै आफैं गई वा आफू मातहतका अधिकृतलाई पठाई सकेसम्म सम्झाइ शान्ति कायम गराउने र नसकेमा प्रहरीको मद्दतले लाठी चार्ज, अश्रुग्याँस, फोहरा र हवाई फायर समेत आवश्यकता र परिस्थिति अनुसार जो गर्नु पर्ने बल प्रयोग गरी शान्ति कायम गर्ने गराउने,

(ख) खण्ड (क) अनुसार शान्ति कायम गर्न नसकिने देखिएमा र गोली चलाउनु पर्ने आवश्यकता परेमा सो गर्नुभन्दा अगाडि भीडलाई हट्दैनौ भने गोली चलाइनेछ भनी स्पष्टसँग सो भीडले बुझ्ने गरी चेतावनी दिने र त्यति गर्दा पनि भीड हटेन र गोली चलाउनु पर्ने नै भयो भने घुँडा मुनि पारी गोली चलाउनको निमित्त आदेश लेखी सही गरी दिने,

---

▲ दोस्रो संशोधनद्वारा संशोधित ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।
⊠ तेस्रो संशोधनद्वारा झिकिएको ।
✖ दोस्रो संशोधनद्वारा झिकिएको ।

(ग) ✖… … … …

(घ) ✂… …जिल्लामा शान्ति सुरक्षा कायम गर्ने समयले भ्याएसम्म लिखित र नभ्याएमा मात्र मौखिक आदेश आवश्यकता अनुसार प्रहरी अधिकृतलाई दिने र मौखिक आदेश दिएकोमा समय पाउनासाथ बढीमा चौबीस घण्टाभित्र सो आदेशलाई लिखित रूपमा समर्थन गर्ने,

◉(ङ) जिल्लामा शान्ति सुरक्षा कायम गर्ने कामको लागि जिल्ला प्रहरी कार्यालयले प्रमुख जिल्ला अधिकारीको प्रत्यक्षः नियन्त्रण र निर्देशनमा रही काम गर्नु पर्नेछ ।

☑(१क) उपदफा (१) बमोजिम शान्ति सुरक्षा कायम गर्ने सम्बन्धमा भए गरेका काम कारवाहीको जानकारी प्रमुख जिल्ला अधिकारीले क्षेत्रीय प्रशासक तथा गृह मन्त्रालयलाई तुरून्त दिनु पर्नेछ र सो सम्बन्धमा क्षेत्रीय प्रशासकले दिएको निर्देशनको पालना गर्नु प्रमुख जिल्ला अधिकारीको कर्तव्य हुनेछ ।

❷(२) आफ्नो अधिकार क्षेत्रभित्रको कुनै ठाउँमा गम्भीर अशान्ति भएको छ वा हुने सम्भावना छ र सो ठाउँमा भैरहेको शान्ति रोक्न वा अशान्ति हुन नदिन अन्य प्रहरीको मद्दतबाट मात्र सम्भव छैन भन्ने प्रमुख जिल्ला अधिकारीलाई लागेमा यस सम्बन्धी कारण तथा आधार खुलाई निजले स्थानीय वा नजिकको सशस्त्र प्रहरी वा अवस्था अनुसार नेपाली सेनाको मद्दत माग्न सक्नेछ । त्यसरी सशस्त्र प्रहरी वा नेपाली सेनाको मद्दत मागेकोमा क्षेत्रीय प्रशासक र गृह मन्तालयलाई चौबीस घण्टाभित्र सबैभन्दा छिटो साधनद्वारा त्यसको सूचना दिनु पर्नेछ ।

☑(२क) आफ्नो अधिकार क्षेत्रभित्रको सिमाना जोडिएका दुई वा दुईभन्दा बढी जिल्लाहरूमा गम्भीर अशान्ति भएको छ वा हुने सम्भावना छ र सो ठाउँमा भैरहेको अशान्ति रोक्न वा अशान्ति हुन नदिन अन्य प्रहरीको मद्दतबाट मात्र सम्भव छैन भन्ने क्षेत्रीय प्रशासकलाई लागेमा निजले स्थानीय वा नजिकको सशस्त्र प्रहरी वा अवस्था अनुसार नेपाली सेनाको मद्दत माग्न सक्नेछ । त्यसरी सशस्त्र प्रहरी वा नेपाली सेनाको मद्दत मागेकोमा सम्बन्धित प्रमुख जिल्ला

---

✖ दोस्रो संशोधनद्वारा झिकिएको ।
✂ पहिलो संशोधनद्वारा झिकिएको ।
◉ पहिलो संशोधनद्वारा थप ।
☑ चौथो संशोधनद्वारा थप ।
❷ चौथो संशोधनद्वारा संशोधित ।

अधिकारीलाई र गृह मन्त्रालयलाई चौबीस घण्टाभित्र सबैभन्दा छिटो साधनद्वारा त्यसको सूचना दिनु पर्नेछ ।

(३) कसैले कुनै काम गर्न लाग्दा वा कहीं केही वस्तु रहँदा वा कसैले राख्दा हुलदङ्गा भई शान्ति सुरक्षा भंग हुने वा कसैलाई बाधा विरोध पर्ने वा जनस्वास्थ्यलाई खराब असर पर्ने सम्भावना भएमा ✂... ... ... प्रमुख जिल्ला अधिकारीले देहाय बमोजिमको आदेश दिन सक्नेछ र सो आदेश एक पटकमा दुई महीनाभन्दा बढी अवधिको हुने छैन ।

(क) कसैलाई कुनै काम गर्न दिनबाट निषेध गर्ने,

(ख) कुनै वस्तु वा सम्पत्तिको मालिक वा व्यवस्थापक वा प्रमुखलाई सो वस्तु वा सम्पत्ति सो ठाउँबाट हटाउन आदेश दिने वा सो ठाउँमा कुनै काम गर्न निषेध गर्ने ।

⁂(३क) कुनै ठाउँमा हुलदङ्गा वा अशान्ति भएमा वा हुन सक्ने पर्याप्त आधार भएमा सो परिस्थितिलाई दृष्टिगत गरी प्रमुख जिल्ला अधिकारीले क्षेत्र र समय तोकी सो क्षेत्र र समयमा हुलदङ्गा वा अशान्ति गर्ने उद्देश्यले एकै ठाउँमा पाँचजनाभन्दा बढी मानिस जम्मा हुन नपाउने गरी आदेश जारी गर्न सक्नेछ । त्यस्तो आदेश उल्लंघन गर्ने व्यक्तिलाई प्रमुख जिल्ला अधिकारीले पाँच सय रूपैयाँसम्म जरिवाना वा एक महिनासम्म कैद वा दुवै सजाय गर्न सक्नेछ ।

(४) उपदफा (३) बमोजिम ✂... ... ... प्रमुख जिल्ला अधिकारीले कसैलाई कुनै आदेश दिंदा सो दिनु पर्ने कारण लेखी सम्बन्धित व्यक्तिको नाममा सूचना पठाउनु पर्दछ । सम्बन्धित व्यक्ति फेला नपरेमा काम नरोकिने गरी प्रचलित नेपाल कानून बमोजिम सूचना टाँस गर्नु पर्दछ । त्यस्तो आदेश उल्लंघन गर्ने व्यक्तिलाई आदेश दिने अधिकृतले पटकै पिच्छे बढीमा पचास रूपैयाँसम्म जरिबाना गर्न सक्नेछ ।

✱(५) जिल्लाभित्र जग्गा जमीन, कुलो, पानी, साँध सीमानाबारे शान्ति भङ्ग हुन जाने जस्तो झगडा भएको वा हुन लागेको छ भन्ने थाहा हुन आएमा प्रमुख जिल्ला अधिकारीले सम्बन्धित पक्षहरूलाई यथाशीघ्र आफ्नो कार्यालयमा झिकाई बयान लिने र आवश्यकता अनुसार सम्बन्धित सम्पत्ति रोक्का गरी तीन महिनादेखि जसको जिम्मा छ उसैको वा ■नगरपालिका वा

✂ पहिलो संशोधनद्वारा झिकिएको ।
⁂ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा थप ।
✱ पहिलो संशोधनद्वारा संशोधित ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।

गाउँ विकास समिति वा कुनै माथवर व्यक्तिको जिम्मामा सुम्पन लगाई चित्त नबुझ्ने पक्षलाई अदालतबाट हक बेहक छुट्याएर आउन आदेश दिन सक्नेछ ।

◈(६) उपदफा (३), (३क), (४) र (५) अन्तर्गत प्रमुख जिल्ला अधिकारीले गरेको आदेश वा सजाय उपर चित्त नबुझ्ने व्यक्तिले पैंतीस दिनभित्र सम्बन्धित पुनरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

❷(७) प्रत्येक जिल्लामा शान्ति सुरक्षा र सुव्यवस्था गर्ने काममा सहयोग पुऱ्याउन देहाय बमोजिमको एक सुरक्षा समिति रहनेछ :-

| | | |
|---|---|---|
| (क) | प्रमुख जिल्ला अधिकारी | - अध्यक्ष |
| (ख) | नेपाली सेनाको स्थानीय प्रमुख | - सदस्य |
| (ग) | जिल्ला प्रहरी कार्यालयको प्रमुख | -सदस्य |
| (घ) | सशस्त्र प्रहरी कार्यालयको स्थानीय प्रमुख | - सदस्य |
| (ङ) | राष्ट्रिय अनुसन्धान विभागको जिल्लास्थित कार्यालयको प्रमुख | - सदस्य◈ |
| ⁂(च) | सहायक प्रमुख जिल्ला अधिकारी | -सदस्य-सचिव |

(८) ✂.....................

(९) जिल्ला सुरक्षा समितिको बैठकमा प्रमुख जिल्ला अधिकारीले आवश्यकता अनुसार जिल्लास्थित अन्य कार्यालयका पदाधिकारीलाई आमन्त्रण गन सक्नेछ ।

(१०) उपदफा (७) बमोजिमको समितिको बैठक आवश्यकता अनुसार प्रमुख जिल्ला अधिकारीले बोलाउन सक्नेछ ।

✚६क. **कर्फ्यू लगाउन सक्ने** : (१) कुनै ठाउँमा आन्दोलन वा हुलदङ्गा भई शान्ति भङ्ग हुन जाने देखिएमा परिस्थितिको विचार गरी आवश्यक भएमा⊠... ... ... प्रमुख जिल्ला अधिकारीले त्यस्तो स्थानको

◈ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा संशोधित ।
❷ चौथो संशोधनद्वारा संशोधित ।
⁂ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा थप ।
✂ चौथो संशोधनद्वारा झिकिएको ।
✚ दोस्रो संशोधनद्वारा थप ।
⊠ तेस्रो संशोधनद्वारा झिकिएको ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।

सीमाना तोकी सो ठाउँमा कसैले आवतजावत गर्न, भेला हुन र तोकेको अरू कुनै काम गर्न नपाउने गरी कर्फ्यू लगाउन आदेश जारी गर्न सक्नेछ। त्यसरी कर्फ्यूको आदेश दिंदा ■प्रमुख जिल्ला अधिकारीले सो आदेश, कर्फ्यू लाग्ने क्षेत्र र सो वरिपरिका क्षेत्रका सर्वसाधारण जनताको जानकारीको लागि प्रचार गर्नु पर्दछ।

(२) उपदफा (१) बमोजिम आदेश जारी भएपछि निषेध गरिएको स्थान र समयभित्र ■प्रमुख जिल्ला अधिकारीबाट गोप्य संकेत लिएको इजाजत प्राप्त व्यक्ति बाहेक अरू कसैले आवतजावत गर्न हुँदैन ।

(३) कर्फ्यूको आदेश उल्लंघन गर्ने व्यक्तिलाई प्रहरीले गिरफ्तार गर्नेछ र त्यसरी गिरफ्तार गरिएका व्यक्तिलाई तुरून्त प्रहरीले ■प्रमुख जिल्ला अधिकारी समक्ष पेश गर्नु पर्नेछ। त्यसरी गिरफ्तार गरिएका व्यक्तिलाई ■प्रमुख जिल्ला अधिकारीले उपयुक्त सम्झेको संक्षित कार्यविधि अपनाई एक महीनासम्म कैद वा एक हजार रूपैयाँसम्म जरिबाना वा दुवै सजाय गर्न सक्नेछ र उक्त सजायको आदेश उपर ?पुनरावेदन अदालतमा पुनरावेदन लाग्नेछ।

(४) कर्फ्यूको आदेश दिंदा ■प्रमुख जिल्ला अधिकारीले कर्फ्यूको स्थितिलाई नियन्त्रणमा राख्न कर्फ्यू तोड्ने व्यक्ति वा जमातलाई गोली चलाउन प्रहरीलाई आदेश समेत दिन सक्नेछ। त्यस्तो स्थितिमा प्रहरीले गोली चलाउनु आवश्यक परेमा गोली चलाउनुभन्दा अगाडि कर्फ्यू तोड्ने व्यक्ति वा जमातलाई प्रहरीले परिस्थिति अनुसार लाठी चार्ज, अश्रुग्यास, फोहरा वा हवाई फायर गर्नु पर्ने छ र त्यति गर्दा पनि कर्फ्यू तोड्ने व्यक्ति वा जमात हटेन भने त्यस्तो व्यक्ति वा जमातलाई हट्दैनौ भने गोली चलाइनेछ भनी स्पष्टसँग बुझिने गरी चेतावनी दिनु पर्नेछ। त्यसरी चेतावनी दिंदा पनि कर्फ्यू तोड्ने व्यक्ति वा जमात हटेन भने प्रहरीले गोली चलाउन सक्ने छ।

तर यस उपदफामा लेखिएको कुनै कुराले पनि ■प्रमुख जिल्ला अधिकारीलाई हिंसात्मक प्रवृत्ति देखाई कर्फ्यू तोड्ने व्यक्ति वा जमातलाई देख्नेबित्तिकै गोली हान्ने आदेश दिन बाधा पुऱ्याएको मानिने छैन।

---

■ तेस्रो संशोधनद्वारा संशोधित।
? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित।
⊠ तेस्रो संशोधनद्वारा झिकिएको।

(५) ⊠... ... ... प्रमुख जिल्ला अधिकारीले आदेश जारी गरी लगाइएको कर्फ्यूको अवधिलाई सोही अधिकारीले परिस्थिति अनुसार घटाउँदै लगी स्थिति सामान्य भएपछि कर्फ्यू पूर्णतया हटाइने छ।

■(६) प्रमुख जिल्ला अधिकारीले कर्फ्यूको आदेश दिएपछि त्यसको जानकारी ❷क्षेत्रीय प्रशासक र गृह मन्त्रालयलाई तुरून्त दिनु पर्नेछ।

✚६ख. **दङ्गाग्रस्त क्षेत्र घोषित गर्न सक्ने** : (१) कुनै क्षेत्रमा जुलुस, भीड वा संगठित समूहले हातहतियार समेत लिई वा नलिई लुटपिट गर्ने, घर वा पसलमा आगो लगाउने, सार्वजनिक सम्पत्ति तोडफोड गर्ने जस्ता हिंसात्मक वा विध्वंसात्मक कार्य गर्ने स्थिति देखिएमा र यसको रोकथाम सामान्य प्रहरी कारवाहीद्वारा हुन सक्दैन भन्ने लागेमा ⊠..................प्रमुख जिल्ला अधिकारीले उक्त क्षेत्रलाई दङ्गाग्रस्त घोषित गर्न सक्नेछ। यसरी दङ्गाग्रस्त क्षेत्र घोषित गरेपछि सो क्षेत्रको शान्ति सुव्यवस्था कायम गर्न ■प्रमुख जिल्ला अधिकारीले देहाय बमोजिमको कुनै वा सबै कारवाही गर्न सक्नेछ :

(क) त्यस्तो क्षेत्रमा शंकास्पद व्यक्तिहरूलाई पक्राउ पूर्जी बिना पक्राउ गर्ने र ■सार्वजनिक सुरक्षा ऐन, २०४६ बमोजिम नजरबन्दमा राख्ने,

(ख) त्यस्तो क्षेत्रमा लुटपीट गर्ने तथा घर वा पसलमा आगो लगाउने, सार्वजनिक सम्पत्ति तोडफोड गर्ने वा अन्य किसिमका हिंसात्मक वा विध्वंसात्मक कार्य गर्ने व्यक्तिलाई देख्ने बित्तिकै गोली प्रहार गर्ने।

(ग) त्यस्तो क्षेत्रमा कुनै प्रकारको भेला, जुलुस, सभा, बैठक वा प्रदर्शन वा पोष्टर, पर्चा जस्ता प्रचार सामग्री टाँस्न वा लेख्न निषेध गर्ने,

(घ) त्यस्तो क्षेत्रमा अत्यावश्यक वस्तुहरूको आपूर्तिको व्यवस्था मिलाउने, त्यस्ता वस्तुहरूको परिवहन, संचय, विक्री वितरणमा नियन्त्रण गर्ने,

(ङ) त्यस्तो क्षेत्रमा शिक्षण संस्था लगायत अन्य कुनै संस्था, मनोरन्जन केन्द्र र कार्यालय बन्द गराउने,

---

■ तेस्रो संशोधनद्वारा संशोधित।
❷ चौथो संशोधनद्वारा संशोधित।
✚ दोस्रो संशोधनद्वारा थप।
⊠ तेस्रो संशोधनद्वारा झिकिएको।

(च) त्यस्तो क्षेत्रमा आवश्यक सेवा सञ्चालन ऐन, २०१४ बमोजिम कुनै आवश्यक सेवामा हड्ताल गर्न निषेध गर्ने,

(छ) त्यस्तो क्षेत्रमा पाँचजना वा सोभन्दा बढी व्यक्तिहरू जम्मा हुन निषेध गर्ने,

(ज) त्यस्तो क्षेत्रमा कर्फ्यू लगाउने,

(झ) त्यस्तो क्षेत्रमा उपरोक्त कार्यहरूको लागि आवश्यक देखेमा नेपाली सेनाको सहयोग लिने ।

(२) दङ्गाग्रस्त क्षेत्रमा अवैध हातहतियार एवं खरखजाना राखेको छ भन्ने शंका लागेमा ■प्रमुख जिल्ला अधिकारीको आदेशले त्यस्तो क्षेत्रमा रहेको जुनसुकै व्यक्तिको घर, पसल, कम्पाउण्ड वा गोदाम आदिमा पूर्व सूचना नदिइकनै घटीमा प्रहरी सहायक निरीक्षकसम्मका दर्जाका प्रहरी कर्मचारीले खानतलासी गर्न सक्नेछ ।

■(३) उपदफा (१) बमोजिम दङ्गाग्रस्त क्षेत्र घोषित गर्दा प्रमुख जिल्ला अधिकारीले एक पटकमा बढीमा एक महिनासम्मको अवधिका लागि मात्र घोषित गर्न सक्नेछ । उक्त अवधि बढाउनु परेमा प्रमुख जिल्ला अधिकारीले नेपाल सरकार, गृह मन्त्रालयको स्वीकृति लिई सो अवधिलाई थप तीन महिनासम्म बढाउन सक्नेछ ।

(४) प्रमुख जिल्ला अधिकारीले दङ्गाग्रस्त क्षेत्र घोषित गरेको जानकारी ❷क्षेत्रीय प्रशासक र गृह मन्त्रालयलाई तुरून्त दिनु पर्नेछ ।

(५) उपदफा (१) को खण्ड (ङ) वा (छ) उल्लंघन गर्ने वा उपदफा (२) बमोजिम खानतलासी लिंदा बाधा विरोध गर्ने व्यक्तिलाई ■प्रमुख जिल्ला अधिकारीले उपयुक्त सम्झेको संक्षिप्त कार्यविधि अपनाई तीन महिनासम्म कैद वा तीन हजार रूपैयाँसम्म जरिबाना वा दुबै सजाय गर्न सक्नेछ र उक्त सजायको आदेश उपर ?पुनरावेदन अदालतमा पुनरावेदन लाग्ने छ ।

**⁂६ग. सार्वजनिक सेवा वा सडकमा अबरोध गर्न वा कुनै घर वा सवारी साधन तोडफोड गर्न नहुने** : (१) कसैले पनि देहायको काम गर्न गराउन हुँदैनः-

■ तेस्रो संशोधनद्वारा संशोधित ।

❷ चौथो संशोधनद्वारा संशोधित ।

? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।

⁂ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा थप ।

(क) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएको सार्वजनिक सडकमा चक्काजाम गरी वा अन्य कुनै प्रकारले त्यस्तो सडक सुचारू रूपमा सञ्चालन गर्न बाधा व्यवधान खडा गर्न,

(ख) सरकारी, सार्वजनिक वा व्यक्तिगत सवारी साधन, घर वा सम्पत्ति तोडफोड, आगजनी वा लुटपाट गरी क्षति पुऱ्याउन वा त्यस्तो सवारी साधन वा घर जग्गामा जवर्जस्ती प्रवेश गर्न वा त्यस्तो सवारी साधन, घर वा सम्पत्ति कब्जामा लिन, र

(ग) सरकारी तथा सार्वजनिक निकाय र शिक्षण संस्थामा तालाबन्दी जस्ता कुनै कार्य गरी अबरोध पुऱ्याउन ।

(२) कसैले उपदफा (१) बमोजिमको कुनै काम गरेमा प्रमुख जिल्ला अधिकारीले त्यस्तो व्यक्तिलाई कसूरको प्रकृति हेरी दश हजार रूपैयाँसम्म जरिवाना वा छ महिनासम्म कैद वा दुवै सजाय गर्न र निजले गरेको हानी नोक्सानीको बिगो निजबाट असुल गरी निजलाई बिगो बमोजिम जरिवाना समेत गर्न सक्नेछ ।

(३) प्रमुख जिल्ला अधिकारीले यस दफा बमोजिम कारबाही गर्दा संक्षिप्त कार्यबिधि ऐन, २०२८ बमोजिमको कार्यविधि अपनाउनेछ ।

(४) उपदफा (२) बमोजिम प्रमुख जिल्ला अधिकारीले गरेको सजाय उपर चित्त नबुझ्ने व्यक्तिले पैंतीस दिनभित्र सम्बन्धित पुनरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

■७. **<u>प्रहरी कर्मचारी सम्बन्धी अधिकार र कर्तव्य</u>** : (१) प्रमुख जिल्ला अधिकारीले जिल्ला प्रहरी कार्यालय, ईलाका प्रहरी कार्यालय र प्रहरी चौकी समेत ठीक अवस्थामा रहे नरहेको, प्रहरी कर्मचारी र अधिकृत जवानहरूले कानून बमोजिम काम कारवाही गरे नगरेको भन्ने कुराको आवश्यक जाँचबुझ गरी सो सम्बन्धमा देहाय बमोजिम गर्नु पर्नेछ :

(क) जिल्ला प्रहरी कार्यालय, इलाका प्रहरी कार्यालय र प्रहरी चौकी समेतमा घटीमा कमसेकम वर्षको एक पटक अनिवार्य रूपमा निरीक्षण गर्नु पर्नेछ । त्यसको प्रतिवेदन ❷<u>क्षेत्रीय प्रशासक र गृह मन्त्रालयमा</u> पठाउनु पर्नेछ ।

■ तेस्रो संशोधनद्वारा संशोधित ।
❷ चौथो संशोधनद्वारा संशोधित ।

(ख) प्रहरी अधिकृतहरूको नेकीवदी र कार्य सम्पादनको प्रतिवेदन प्रत्येक वर्ष पौष मसान्त र आषाढ मसान्तमा वर्षको दुई पटक ❷क्षेत्रीय प्रशासक र गृह मन्त्रालयमा पठाउनु पर्नेछ ।

(ग) जिल्लाको प्रहरी सम्बन्धी कुनै कामको बन्दोवस्त गर्नु पर्ने देखिन आएमा आफ्नो राय समेत प्रमुख जिल्ला अधिकारीले ❷क्षेत्रीय प्रशासक र गृह मन्त्रालयमा लेखी पठाउनु पर्नेछ ।

(घ) प्रहरी कर्मचारीले आफ्नो कर्तव्य पालन गर्दा कानून विपरीत कार्य गरेको आधारमा कसैले उजुर गरेमा आवश्यक छानविन गरी आफ्नो सिफारिस एवं राय सहित आवश्यक कारवाईको लागि ❷क्षेत्रीय प्रशासक र गृह मन्त्रालयमा प्रतिवेदन प्रस्तुत गर्नु पर्नेछ ।

८. **मुद्दा मामिला र पुनरावेदन सम्बन्धी अधिकार** : (१) देहायका मुद्दाहरूमा शुरू कारवाही र किनारा गर्ने अधिकार प्रमुख जिल्ला अधिकारीको हुनेछ :

■(क) पाँचसय रूपैयाँसम्म बिगो भएको साधारण चोरी मुद्दा,

(ख) बगलीमारा मुद्दा,

(ग) ⊛.. … … … …

(घ) नपुग नापतौल प्रयोग गरी ठगेको मुद्दा,

(ङ) चली आएको देवी देवताको स्थानमा बाहेक स्त्रीजाति चौपाया मारेको सम्बन्धी मुद्दा,

(२) उपदफा (१) अन्तर्गतका पटके नजनिने मुद्दामा बढीमा ■पाँचसय रूपैयाँसम्म जरिवाना गरी छिनेको प्रमुख जिल्ला अधिकारीको निर्णय अन्तिम हुनेछ र निजको निर्णय उपर पुनरावेदन लाग्नेछैन । ■पाँचसय रूपैयाँ भन्दा बढी जरिवाना गरी छिनेको वा पटके जनिने मुद्दामा निजको निर्णय उपर पैंतीस दिनभित्र ?पुनरावेदन अदालतमा पुनरावेदन लाग्नेछ ।

---

❷ चौथो संशोधनद्वारा संशोधित ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।
⊛ कालो बजार तथा केही अन्य सामाजिक अपराध तथा सजाय ऐन, २०३२ द्वारा खारेज ।
? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।
❑ न्याय प्रशासन सुधार (चौथो संशोधन) ऐन, २०४३ द्वारा खारेज ।

(३) प्रमुख जिल्ला अधिकारीले आफुकहाँ परेको उजुरीहरूको सिलसिलामा कुनै स्त्री वा नावालकको धन सुरक्षित साथ राख्न लगाउन आवश्यक देखेमा ■नगरपालिका वा गाउँ विकास समितिको सहयोग लिई सो धन जिल्लाका कुनै गन्यमान्य व्यक्ति वा सरकारी कार्यालयको जिम्मामा सुरक्षित राख्न लगाउन सक्नेछ ।

(४) ❑... ... ... ... ...

(५) ❑... ... ... ... ...

(६) ⊠... ... ... प्रमुख जिल्ला अधिकारीले यो ऐन वा प्रचलित नेपाल कानून बमोजिम मुद्दा मामिलाहरूको कारवाही र किनारा गर्दा जुन ऐन अन्तर्गत मुद्दा मामिलाको कारवाही र किनारा गर्ने हो सो ऐन समेत उल्लेख गरी प्रचलित नेपाल कानून बमोजिमको म्यादभित्र कारवाही र किनारा गर्नु पर्दछ ।

९. **प्रमुख जिल्ला अधिकारीको अन्य काम, कर्तव्य र अधिकार** : (१) अम्मल खाई सार्वजनिक स्थानमा बसेर लापरबाही साथ बोली हिंड्ने वा जथाभावी गर्ने व्यक्तिलाई प्रमुख जिल्ला अधिकारीले पक्रन लगाई अम्मलले नछाडेसम्म थुन्न सक्नेछ र अम्मलले छाडेपछि निजलाई मौखिक नसिहत दिन र फेरि पनि सोही कसूर गरेमा निजलाई पटकै पिच्छे बढीमा ❷एक हजार रूपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(२) वेवारिसी मालसामान कुनै ठाउँमा पाइएमा प्रमुख जिल्ला अधिकारीले मुलुकी ऐन, कल्याण धनको महल बमोजिम गर्नु गराउनु पर्दछ ।

(३) सरकारी वा आफ्ना घरायसी काममा कुनै सरकारी कर्मचारीले कसैलाई पनि बिना पारिश्रमिक करकापले काम गर्न लगाएमा प्रमुख जिल्ला अधिकारीले निज उपर प्रचलित नेपाल कानून बमोजिम कारवाही चलाउन वा निजामती सेवा नियमावली अनुसार विभागीय कारबाहीको लागि सम्बन्धित विभागीय प्रमुख समक्ष लेखी पठाउन सक्नेछ ।

(४) प्रमुख जिल्ला अधिकारीले बाघ, चितुवा वा अन्य हिंस्रक जनवारले आफ्ना जिल्लाभित्रका कुनै ठाउँमा दुःख दिएको कुरा ■नगरपालिका वा गाउँ विकास समितिले प्रतिवेदन

---

⊠ तेस्रो संशोधनद्वारा झिकिएको ।
❷ चौथो संशोधनद्वारा संशोधित ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।

गरेमा सो जनावरलाई मार्न लगाई छाला एवं शरीरका अन्य भाग सम्बन्धित वन कार्यालयमा बुझाइदिन वा ❷वन तथा भू-संरक्षण मन्त्रालयले निर्देशन दिए बमोजिम गर्नु पर्दछ ।

(५) कसैले कुनै मालसामान बिक्री गर्दा अनुचित नाफा खाई नाजायज फाइदा उठाएमा त्यस्तो विक्रेतालाई खरीद बिक्री भएको मालसामानको परिमाण र मोलको विचार गरी प्रमुख जिल्ला अधिकारीले ■एक हजार रूपैयाँसम्म जरिवाना वा तीन महीनासम्म कैद गर्न वा दुबै सजाय गर्न सक्नेछ । प्रमुख जिल्ला अधिकारीले दिएको सजायमा चित्त नबुझ्ने व्यक्तिले पैंतीस दिनभित्र ?पुनरावेदन अदालतमा पुनरावेदन गर्न सक्नेछ ।

(६) प्रमुख जिल्ला अधिकारीले आफ्नो जिल्लाभित्रको सार्वजनिक धारा, कुवा, पोखरी, पँधेरो, पाटी पौवा, सत्तल धर्मशाला, मन्दिर, गुफा, पुल आदिको लगत लिई राख्नुपर्छ र भत्की बिग्री, नोक्सान हुन लागेमा त्यसको धनी, वारिस ■नगरपालिका वा गाउँ विकास समिति वा गुठी संस्थानद्वारा मरमत गर्न लगाउनु पर्दछ ।

⌒(६क) सरकारी जग्गा वा सार्वजनिक जग्गामा आफ्नो हक कायम नभै कसैले घर बनाउनु हुँदैन । कसैले त्यस्तो जग्गामा घर बनाएमा वा बनाउन प्रयत्न गरेमा प्रमुख जिल्ला अधिकारीले त्यस्तो व्यक्तिलाई घर बनाउन रोक्का गर्ने आदेश दिन सक्नेछ । त्यस्तो आदेश दिँदा घर बनाई सकेको वा बनाईरहेको भए एक महिनाभित्र घर भत्काई लैजान समेत आदेश दिन सक्नेछ । सो म्यादभित्र घर भत्काई नलागेमा त्यस्तो घर बनाउनेलाई प्रमुख जिल्ला अधिकारीले पाँचहजार रूपैयाँसम्म जरिबाना गरी त्यस्तो घर भत्काउन सक्नेछ र त्यसरी घर भत्काउँदा लागेको खर्च समेत सम्बन्धित व्यक्तिबाट असुल गर्न सक्नेछ ।

स्पष्टीकरण:

(१) यस उपदफाको प्रयोजनको लागि सार्वजनिक जग्गा भन्नाले परापूर्वदेखि हिंडिआएको बाटो, सडक, गौचर, पानीघाट, चिहान, मसानघाट, कुवा, सार्वजनिक पोखरी, पोखरीको डिल, खाने पानीको मूल, गाई वस्तु निकाल्ने निकास, हाटमेला लाग्ने ठाउँ, सार्वजनिक मनोरन्जन र खेलकूद गर्ने ठाउँ, त्यस्तै सार्वजनिक रूपमा चलन भई आएको वा संधिसर्पन पर्ने

---

❷ चौथो संशोधनद्वारा संशोधित ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।
? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।

■ तेस्रो संशोधनद्वारा संशोधित ।
⌒ केही नेपाल ऐन (संशोधन) ऐन, २०४३ द्वारा थप ।

जग्गा र नेपाल सरकारले कमौट नगर्नु भनी बँझ्याइएको वा रोक्का राखिएको जग्गालाई जनाउँदछ ।

(२) यस उपदफाको प्रयोजनको लागि घर भन्नाले खर, फुस वा टिनको छाना भएको वा नभएको छाप्रो र कच्ची बनौटलाई समेत जनाउँदछ ।

(७) कुनै व्यक्ति बहुलाएको छ र त्यसलाई नियन्त्रणमा नराखी त्यसै छाडा राखेमा सम्बन्धित व्यक्ति वा समाजलाई खतरा हुन्छ भन्ने लागेमा प्रमुख जिल्ला अधिकारीले मुलुकी ऐन इलाज गर्नेको महलको ६ नम्बर बमोजिम गर्नु गराउनु पर्दछ ।

(८) कसैलाई कसैसँगको नाताको प्रमाणपत्र चाहियो भनी प्रमुख जिल्ला अधिकारी समक्ष निवेदन दिन आएमा प्रमुख जिल्ला अधिकारीले जाँची बुझी ठीक ठहरेमा पाँच रूपैयाँ दस्तुर लिई आवश्यक प्रमाणपत्र दिन सक्नेछ ।

■(९) उपदफा (१) र (७) ले दिएको अधिकार प्रयोग गरी प्रमुख जिल्ला अधिकारीले गरेको काम कारवाहीको आदेश उपर चित्त नबुझ्ने व्यक्तिले त्यस्तो आदेश भएको पैंतीस दिनभित्र ?पुनरावेदन अदालतमा उजुर गर्न सक्नेछ ।

◉(१०) परम्परादेखि चलिआएको धार्मिक पूजा आजा चलाउनु पर्ने अवस्थामा बाहेक बुद्ध जयन्ती, कृष्ण जन्माष्टमी, महाशिवरात्री, रामनवमी र एकादशीको पर्वको दिन वा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी पशुपंक्षी वध गर्न मनाई गरी तोकिदिएको धार्मिक स्थलमा कसैले पशुपन्छीको वध गरेमा प्रमुख जिल्ला अधिकारीले निजलाई ■पाँचसय रूपैयाँसम्म जरिबाना गर्न सक्नेछ र प्रमुख जिल्ला अधिकारीको त्यस्तो जरिबानाको आदेश उपर पुनरावेदन लाग्नेछैन ।

✚(११) ■नगरपालिका क्षेत्रभित्र कसैले गाई वस्तुलाई सडकमा छाडा छोडन हुँदैन र यसरी कसैले गाई वस्तुलाई सडकमा छाडा छोडेमा र त्यस्तो छाडा गाई वस्तुलाई सम्बन्धित ■नगरपालिकाले पक्री नथुनेको अवस्थामा प्रमुख जिल्ला अधिकारीले त्यस्तो गाई वस्तुलाई पक्री निजले उपयुक्त संझेको तरीका अपनाई लिलाम बिक्री गर्नु पर्नेछ र लिलाम बिक्रीबाट आएको

■ तेस्रो संशोधनद्वारा संशोधित ।
? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।
◉ पहिलो संशोधनद्वारा थप ।
✚ दोस्रो संशोधनद्वारा थप ।

रकम ■जिल्ला विकास समितिको कोषमा दाखिला गर्नु पर्नेछ। लिलाम बिक्री हुँदा कसैले नसकारेमा प्रमुख जिल्ला अधिकारीले त्यस्तो गाई वस्तुलाई गाई वस्तुको धनी बाहेक अरू कसैलाई बिना मोल हस्तान्तरण गर्न सक्नेछ ।

स्पष्टीकरणः यस उपदफाको प्रयोजनको लागि -

(१) "गाई वस्तु" भन्नाले गोरू, भैंसी, राँगा, घोडा, भेडा र बाख्रा समेतलाई जनाउनेछ ।

(२) "छाडा गाई वस्तु" भन्नाले गाई वस्तुको धनीले गोठाला वा अरू कुनै व्यक्ति नलगाई सडक बाटोमा छोडिराखेको गाई वस्तु सम्झनु पर्छ ।

+(१२) उपदफा (११) उल्लंघन गर्ने गाई वस्तुको धनीलाई प्रमुख जिल्ला अधिकारीको आदेशले दुई सय रूपैयाँसम्म जरिबाना हुनेछ र उक्त सजायको आदेश उपर ?पुनरावेदन अदालतमा पुनरावेदन लाग्नेछ ।

तर छाडा गाई वस्तुको धनीले पुनरावेदन सुन्ने अदालतबाट सफाई पाए पनि उपदफा (११) बमोजिम छाडा गाई वस्तुको लिलाम वा हस्तान्तरण भइसकेको कुरामा सो अदालतको फैसलाले कुनै प्रतिकूल असर पारेको मानिने छैन ।

✂१०. … … … … … … …

◉१०क. **सार्वजनिक सम्पत्तिको अभिलेख** : (१) सर्भे नापी नक्साबाट वा लालमोहर, खड्ग निशाना, ताम्रपत्र, शिलापत्र वा त्यस्तै आधिकारिक लिखतबाट देखिएका सार्वजनिक जग्गा, पाटी, पौवा, सत्तल, पार्क, पोखरी, कुवा, गौचर, निकास इत्यादिका लगत प्रमुख जिल्ला अधिकारीको कार्यालयले तैयार गरी त्यसको अभिलेख राखी त्यसको एक एक प्रतिलिपि मालपोत कार्यालय र ■जिल्ला विकास समितिको कार्यालयलाई दिनु पर्नेछ ।

(२) उपदफा (१) मा उल्लिखित सार्वजनिक जग्गा, पाटी, पौवा, सत्तल, पार्क, पोखरी, कुवा, गौचर, निकास इत्यादि नेपाल सरकारको पूर्व स्वीकृति नलिई कसैले आवाद गर्न वा आवाद गर्ने अनुमति दिनु हुँदैन । आवाद गरेमा वा गर्न अनुमति दिएमा सो गर्न वा गर्ने अनुमति दिने व्यक्तिलाई बिगो बमोजिम जरिबाना वा तीन महिनासम्म कैद वा दुबै सजाय हुनेछ ।

---

+ दोश्रो संशोधनद्वारा थप ।
? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।
◉ पहिलो संशोधनद्वारा थप ।
✂ केही नेपाल ऐन (संशोधन) ऐन, २०४१ द्वारा खारेज ।
◉ केही नेपाल ऐन (संशोधन) ऐन, २०४३ द्वारा थप ।
■ तेस्रो संशोधनद्वारा संशोधित ।

(३) कुनै सार्वजनिक जग्गा, पाटी, पौवा, सत्तल, पार्क, पोखरी, कुवा, गौचर, निकास इत्यादि कसैले दर्ता गराएको रहेछ भने सो दर्ता बदर हुनेछ । सो बमोजिम दर्ता बदर गराउन कुनै हदम्याद हुने छैन ।

## परिच्छेद – ४

## विविध

११. **अधिकार प्रत्यायोजनः** (१) अदालत बाहेक अन्य कुनै अधिकारी वा संस्थालाई यो ऐन वा अन्य कुनै प्रचलित नेपाल कानून बमोजिम प्राप्त भइरहेको अधिकारहरूमध्ये सबै वा केही नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी सम्बन्धित ■जिल्ला विकास समिति, नगरपालिका, गाउँ विकास समिति वा अन्य कुनै अधिकारीले प्रयोग गर्न पाउने गरी प्रदान गर्न सक्नेछ ।

⊠(२) ........

⊠(३) .........

☑(३क) यो ऐन वा अन्य प्रचलित कानून बमोजिम आफूलाई प्राप्त अधिकारमध्ये सबै वा केही अधिकार क्षेत्रीय प्रशासकले प्रमुख जिल्ला अधिकारी वा आफ्नो मातहतका कुनै अधिकृतलाई प्रत्यायोजन गर्न सक्नेछ र यसरी अधिकार प्रत्यायोजन गरेको सूचना गृह मन्त्रालयलाई तुरून्त दिनु पर्नेछ ।

(४) यो ऐन वा अन्य प्रचलित नेपाल कानून बमोजिम आफूलाई प्राप्त भएको अधिकारहरूमध्ये सबै वा केही अधिकारहरू प्रमुख जिल्ला अधिकारीले आफ्नो मातहतको कुनै अधिकृतलाई प्रत्यायोजन गर्न सक्नेछ र यसरी अधिकार प्रत्यायोजन गरेको सूचना ❷क्षेत्रीय प्रशासक र गृह मन्त्रालयलाई तुरून्त दिनु पर्दछ ।

तर प्रमुख जिल्ला अधिकारीले मुद्दा हेर्ने अधिकार प्रत्यायोजन गर्न सक्ने छैन ।

१२. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वित गर्नका लागि नेपाल सरकारले नियम बनाउन सक्नेछ ।



■ तेस्रो संशोधनद्वारा संशोधित ।
⊠ तेस्रो संशोधनद्वारा झिकिएको ।
☑ चौथो संशोधनद्वारा थप ।
❷ चौथो संशोधनद्वारा संशोधित ।
? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।

▪१३. **<u>मुद्दा सर्ने</u>** : प्रचलित नेपाल कानून बमोजिम तत्कालीन अञ्चलाधीश समक्ष दायर भै छिन्न बाँकी रहेका मुद्दाहरू मध्ये पुनरावेदन तहका मुद्दाहरू सम्बन्धित [१]<u>पुनरावेदन अदालतमा</u> र अन्य मुद्दाहरू सम्बन्धित प्रमुख जिल्ला अधिकारीकहाँ सर्नेछन् ।

१४. **<u>बचाउ</u>**: यो ऐन वा यस ऐन अन्तर्गतको नियममा लेखिएको कुरामा सोही बमोजिम र अरूमा प्रचलित नेपाल कानून बमोजिम हुनेछ ।

१५. **<u>खारेज</u>** : देहायका नेपाल कानूनहरू खारेज गरिएको छ :

(क) स्थानीय प्रशासन ऐन, २०२२

(ख) मधेश गोश्वारा ऐन, २०१२

(ग) काठमाडौं उपत्यकाञ्चल कमिश्नर मेजिष्ट्रेटको सवाल, २००९

(घ) गौंडा गोश्वारा सम्बन्धी प्रशासन (सामाजिक व्यवस्था) ऐन, २०१९

(ङ) मधेश गोश्वारा ऐन, २०१२ (पहाडतर्फ समेत) लागू गर्ने ऐन, २०१४ ।

१६. **<u>स्थानीय प्रशासन अध्यादेश २०२८ निष्क्रिय भएपछि त्यसको परिणाम</u>**: स्थानीय प्रशासन अध्यादेश, २०२८ निष्क्रिय भएपछि अर्को अभिप्राय नदेखिएमा सो निष्क्रियताले :

(क) निष्क्रिय हुँदाको बखत चल्ती नभएको वा कायम नरहेको कुनै कुरा पनि जगाउने छैन,

(ख) सो अध्यादेश बमोजिम चालू भएको कुरा वा सो बमोजिम रीत पुर्‍याई अघि नै गरिएको कुनै काम वा भोगीसकेको कुनै सजायलाई असर पार्ने छैन ।

(ग) सो अध्यादेश बमोजिम पाएका, हासिल गरेको वा भोगेको कुनै हक, सुविधा, कर्तव्य वा दायित्वमा असर पार्ने छैन,

(घ) सो अध्यादेश विरूद्ध गरेको कुनै अपराधमा गरिएको कुनै दण्ड सजाय वा जफतलाई असर पार्ने छैन, र

(ङ) माथि लेखिएको कुनै त्यस्तो हक, सुविधा, कर्तव्य, दायित्व, दण्ड सजाय वा जफत सम्बन्धमा भएको कुनै कानूनी कारवाही वा उपायमा असर पार्ने छैन र उक्त अध्यादेश कायम रहे सरह त्यस्तो कुनै कानूनी कारवाही वा उपायलाई शुरू गर्न, जारी राख्न वा लागू गर्न सकिनेछ र त्यस्तो दण्ड सजाय पनि गर्न सकिनेछ ।

---

<u>द्रष्टव्य</u> :

१. स्थानीय प्रशासन (तेस्रो संशोधन) ऐन, २०४८ को दफा १५ निम्न बमोजिम रहेको छ :

रूपान्तर : यो ऐन र अन्य प्रचलित नेपाल कानूनमा प्रयोग भएको "जिल्ला कार्यालय" भन्ने शब्दहरूको सट्टा "जिल्ला प्रशासन कार्यालय" भन्ने शब्दहरू राखी रूपान्तर गरिएको छ ।

२. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार"।

३. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा "श्री ५ को प्रशस्ति" र "अधिराज्य" भन्ने शव्दहरु झिकिएका छन् ।

❷अनुसूची

## (दफा ३ को उपदफा (१) सँग सम्बन्धित)

## विकासक्षेत्र, अञ्चल र जिल्लाहरूको नाम

| क्र.सं. | विकासक्षेत्र | अञ्चल | जिल्ला |
|---|---|---|---|
| १. | पूर्वाञ्चल विकासक्षेत्र | १. मेची | १. ताप्लेजङ |
| | | | २. पाँचथर |
| | | | ३. इलाम |
| | | | ४. झापा |
| | | २. कोशी | १. संखुवासभा |
| | | | २. तेह्रथुम |
| | | | ३. धनकुटा |
| | | | ४. भोजपुर |
| | | | ५. मोरङ |
| | | | ६. सुनसरी |
| २. | मध्यमाञ्चल विकासक्षेत्र | ३. जनकपुर | १. दोलखा |
| | | | २. रामेछाप |
| | | | ३. सिन्धुली |
| | | | ४. धनुषा |
| | | | ५. महोत्तरी |
| | | | ६. सर्लाही |

❷ चौथो संशोधनद्वारा संशोधित ।

| | | | |
|---|---|---|---|
| | | ४. सगरमाथा | १. सोलुखुम्बु |
| | | | २. ओखलढुङ्गा |
| | | | ३. खोटाङ |
| | | | ४. उदयपुर |
| | | | ५. सप्तरी |
| | | | ६. सिराहा |
| | | ५. वागमती | १. सिन्धुपाल्चोक |
| | | | २. रसुवा |
| | | | ३. काभ्रेपलाञ्चोक |
| | | | ४. भक्तपुर |
| | | | ५. ललितपुर |
| | | | ६. काठमाडौं |
| | | | ७. नुवाकोट |
| | | | ८. धादिङ |
| | | ६. नारायणी | १. मकवानपुर |
| | | | २. रौतहट |
| | | | ३. बारा |
| | | | ४. पर्सा |
| | | | ५. चितवन |
| ३. | पश्चिमाञ्चल विकासक्षेत्र | ७. गण्डकी | १. गोरखा |
| | | | २. तनहुँ |
| | | | ३. मनाङ |
| | | | ४. लमजुङ्ग |
| | | | ५. कास्की |
| | | | ६. स्याङ्गजा |

| | | | |
|---|---|---|---|
| | | ८. लुम्बिनी | १. गुल्मी |
| | | | २. पाल्पा |
| | | | ३. अर्घाखाँची |
| | | | ४. नवलपरासी |
| | | | ५. रूपन्देही |
| | | | ६. कपिलवस्तु |
| | | ९. धौलागिरी | १. पर्वत |
| | | | २. म्याग्दी |
| | | | ३. मुस्ताङ |
| | | | ४. बाग्लुङ |
| ४. | मध्यपश्चिमाञ्चल विकासक्षेत्र | १०. राप्ती | १. रूकुम |
| | | | २. रोल्पा |
| | | | ३. प्यूठान |
| | | | ४. सल्यान |
| | | | ५. दाङ |
| | | ११. कर्णाली | १. डोल्पा |
| | | | २. जुम्ला |
| | | | ३. कालिकोट |
| | | | ४. मुगु |
| | | | ५. हुम्ला |
| | | १२. भेरी | १. जाजरकोट |
| | | | २. दैलेख |
| | | | ३. सुर्खेत |
| | | | ४. बाँके |
| | | | ५. बर्दिया |

| | | | |
|---|---|---|---|
| ५. | सुदूरपश्चिमाञ्चल विकासक्षेत्र | १३. सेती | १. बाजुरा |
| | | | २. बझाङ |
| | | | ३. अछाम |
| | | | ४. डोटी |
| | | | ५. कैलाली |
| | | १४. महाकाली | १. दार्चुला |
| | | | २. बैतडी |
| | | | ३. डडेलधुरा |
| | | | ४. कञ्चनपुर |